

नेपाल सरकार

# गृह मन्त्रालय

(शान्ति सुरक्षा तथा अपराध नियन्त्रण शाखा)



पत्र संख्या:- शा.सु. ०७७/०७८-२६
प्राप्त पत्र संख्या र मिति:-
च.नं.:- 3095

सिंहदरबार,
काठमाडौं, नेपाल ।

मिति:२०७८/०१/०२

विषयः जानकारी सम्बन्धमा ।

श्री रुक्शना कपालीज्यू,
क्वयेर युथ ग्रुप, ललितपुर मनपा १६,
ललितपुर ।

उपरोक्त सम्बन्धमा तपाईले च.नं. ०३५/७७/७८ मिति २०७७/१२/१७ को पत्र मार्फत माग गर्नुभएको सूचना तथा विवरणका सम्बन्धमा जानकारी उपलब्ध गराइदिन प्रहरी प्रधान कार्यालयमा पठाइएकोमा देहाय बमोजिमको विवरण प्राप्त भएकोले सोही ब्यहोरा जानकारीको लागि अनुरोध छ ।

देहाय

१. कुनै पुरुषले अर्को पुरुषलाई जबरजस्ती करणी गरेको भन्ने कुरा जबरजस्ती करणीको कसूरको परिभाषा भित्र नपर्ने, यस सम्बन्धमा हालसम्म कुनै उजुरी नपरेको ।

२. महिलाले महिलालाई जबरजस्ती गरेको उजुरी नपरेको ।

३. पारलैङ्गिक (ट्रान्सजेण्डर) पुरुष पीडित भएको हकमा जबरजस्ती करणी नमानिने तर पारलैङ्गिक (ट्रान्सजेण्डर) महिला पीडित भएको हकमा समेत कानूनी व्यवस्था नभएको । यस्ता प्रकृतिका कसूर उपर हालसम्म कुनै उजुरी प्रहरीमा दर्ता एवं कारबाही भएको नदेखिएको ।

४. कुनै जबरजस्ती करणी कसूरमा पुरुष वा महिला बाहेकको लैङ्गिक पहिचान भएको व्यक्ति (जस्तै: तेस्रो लिङ्गी) पीडित भएको अवस्थामा कानूनी उपचारको स्पष्ट व्यवस्था नभएको । तर पीडक भएमा विद्यमान मुलुकी अपराध संहिता, २०७४ बमोजिम हुने । हालसम्म यस्तो प्रकृतिको कसूर उपर प्रहरीमा कुनै उजुरी दर्ता तथा कारबाही भएको नदेखिएको।

Regd No. दर्ता नं. 010/66/62
Date मिति 2062/01/02
PN पस 1

(खुमकान्त आचार्य)
उप सचिव/सूचना अधिकारी



क्वयेर युथ ग्रुप

**Queer Youth Group**

दर्ता नं : २४४९३५/०७७/०७८
स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौँ।

---

**नेसं ११४१ प्वँहेला ११**

**२०७७ पुष १४**




श्री सूचना अधिकारीज्यू,
गृह मन्त्रालय,
सिंहदरबार, यैँ (काठमाण्डौँ)।

**विषय : सूचना तथा विवरणको प्रमाणित प्रतिलिपि पाउँ।**

महोदय,

उपरोक्त सम्बन्धमा क्वयेर युथ ग्रुप सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्तिहरूको अधिकारका निम्ति कार्यरत संस्था हो । म निवेदक यस संस्थामा आवद्ध भै हाल नेपालमा सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्तिहरूको अधिकार सम्बन्धी अनुसन्धान गरिरहेको छु।

उक्त अनुसन्धान कार्यका लागि हामीलाई तपसिलमा उल्लिखित विवरण, तथ्याङ्क तथा सूचना आवश्यक भएकोले उपलब्ध गराई सहयोग गरिदिन हुन अनुरोध गर्दछु।

<u>**तपसिल**</u>

१) कुनै पुरुषले अर्को पुरुषलाई जबरजस्ती करणी कसुरमा उजुरी दर्ता गर्ने कानूनी प्रकृया र यस्तो प्रकृतिका कसुर उपर हालसम्म प्रहरी प्रशासन वा अन्य कुनै पनि निकायमा दर्ता एवं कारवाही भएका उजुरीहरु भए सोको तथ्याङ्क एवं सो सम्बन्धी विवरण।

२) कुनै महिलाले अर्को महिलालाई जबरजस्ती करणी कसुरमा उजुरी दर्ता गर्ने कानूनी प्रकृया र यस्तो प्रकृतिका कसुर उपर हालसम्म प्रहरी प्रशासन वा अन्य कुनै पनि निकायमा दर्ता एवं कारवाही भएका उजुरीहरु भए सोको तथ्याङ्क एवं सो सम्बन्धी विवरण।

३) कुनै जबरजस्ती करणी कसुरमा पारलैङ्गिक (ट्रान्सजेण्डर) व्यक्ति - पारलैङ्गिक पुरुष र पारलैङ्गिक महिला - पीडित भएमा र पीडक भएमा उजुरी दर्ता गर्ने कानूनी प्रकृया र यस्तो प्रकृतिका कसुर उपर हालसम्म प्रहरी प्रशासन वा अन्य कुनै पनि निकायमा दर्ता एवं कारवाही भएका उजुरीहरु भए सोको तथ्याङ्क एवं सो सम्बन्धी विवरण।

४) कुनै जबरजस्ती करणी कसुरमा महिला वा पुरुष बाहेकको लैङ्गिक पहिचान भएका व्यक्ति (जस्तै तेस्रोलिङ्गी लैङ्गिक पहिचान भएका व्यक्ति, गैर-द्वयसांखिक लैङ्गिक पहिचान भएका व्यक्ति) पीडित भएमा र पीडक भएमा उजुरी दर्ता गर्ने कानूनी प्रकृया र यस्तो प्रकृतिका कसुर उपर हालसम्म प्रहरी प्रशासन वा अन्य कुनै पनि निकायमा दर्ता एवं कारवाही भएका उजुरीहरु भए सोको तथ्याङ्क एवं सो सम्बन्धी विवरण।



रुक्शना कपाली, कार्यकारी निर्देशक

---


ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३

 http://fb.com/QYGnepal/
 qygnepal
 QueerYouthGroup